# रामशाहका २६ थिति

## "स्वस्ति श्री ५ महाराजाधिराज रामशाहबाट बाधि बक्स्याको थिति"

प्रथम थिति ॥ ॥ श्रीनन्दामिश्रज्यूलाइ गुरू तुल्याइ बक्सनु भै हाम्रा संतानले तपाईका संतानलाइ गुरू तुल्याउनु अरूलाइ न तुल्याउनु भन्या धर्म गरी बक्सनु भयो . . .

दोस्रो थिति ॥ ॥ पैल्हे बाँसका ढुंग्राले डालाले र आहिले भन्र्या बस्तु भरि कन लिनु दिनु गर्थ्या एस्ता तरहको लिनु दिनु गर्दा विथिति हुनाले १० मुठीको १ मानु ८ मानाको १ पाथी २० पाथीको १ मुरी गरी चलन गर्नु भनी माना पाथीमा छाप लाई बक्सनु भयो . . .

तेस्रो थिति ॥ ॥ तुलो ढकको पनि अघि विथिति हुनाले १० लालको १ मासा १० मासाको १ तोला १८ लालको १ पल २७ तोलाको १ बोडी १०८ तोलाको १ विसौली २ विसौलीको १ धार्नी तुल्याई चलन गर्नु भनि तुलामा अंक काटी ढक्मा छापलाई बक्सनुभयो . . .

चौथो थिति ॥ ॥ अंनको पहिले असामिले साहुछेउ लियाको कर्जा तिर्न नसकी जति सुकै वर्ष रहया पनि बर्षै प्रतिको व्याज हिसाब गरि लिदा ढेरै वर्षमा रिन तिर्न न सकन्या भया पनि वर्ष प्रतिको व्याज जमा हुनाले कहिले पनि रिन तिर्न नसकदा मुलुकमा कोहिता कहिले पनि साहु देषि छुटि नहुन्या भै सबै रिनग्राही भया तस्कारण

१ वर्षको पचउदका हिसाबले दस वर्षमा ३ गुना हुँछ साहुले तेवर लिनु असामिले साउ व्याज केहि पनि तिर्न नसकि १० वर्ष देषी उभो जति सुकै वर्ष रह्यो पनि फेरि सकन्या भै तिर्दाका बेलामा वर्षै प्रतिको व्याज साहुले नलिनु तेवरमात्र लिनु भन्या थिति बाधि बक्सनु भयो . . .

पाँचौ थिति ॥ ॥ दामको पनि अहिले असामिले साहुछेउ लियाको कर्जा तिर्न नसकी जति सुकै वर्ष रहया पनि बर्षै प्रतिको व्याज जमा हुनाले कहिले पनि रिन तिर्न न सक्दा मुलुकमा कोहिता कैले पनि साहुदेषि छुट्टी न हुन्या भै सवै रिनग्राहि भया तस्कारण १ वर्षका हिसाबले दसौदका १० वर्षमा दोब्बर हुंछ साहुले दोवर लिनु आसामिले साउँ पनि व्याज पनि तिर्न न सकि १० वर्ष देषि उभो जति सुकै वर्ष रह्यो भन्या पनि सकन्या भै तिर्दाका बेलामा वर्ष प्रतिको व्याज साहुले न लिनु दोवरमात्रै लिनु भंन्या थिति बाधि बक्सनु भयो . . .

छैटौं थिति ॥ ॥ पध्याराको थोरो थोरो झगरा नसुंनु भंन्या हुकुम भयो क्या अर्थले भन्या पध्यारामा वहुत स्त्रिजाति जान्या ताहा दोषी अरू कोही चाकर जान्या पनि न भै भन्या कसैको पानि काम नचलन्या तसर्थ जोअघि पध्यारामा लिन पुग्यो तेसैले अघिबाट ल्याउनु अर्काले म लैजान्छु न भंनु तेस पछिकाले तेसै पछि लै जानु यस्तै क्रमले पानि ल्याउनु तेस्मा पनि कसैले अलिकति कुरामा झगरा गऱ्यो भन्या कचहरि जोरि झगरा न सुंनु भन्या थिति बाधि बक्सनु भयो . . .

सातौ थिति ॥  ॥ कोलको पनि थोरो थोरो झगरा न सुंनु भंन्या हुकुम भयो किन भन्या ढेरै घरको कोल यकै हुँछ आफ्ना आफ्ना पालाले पेलुन अर्काले म अघिबाट पेल्छु न भंनु तस्मा पनि ढेरै स्त्रिजाति अरू कोही चाकर वाकरै हुँछ कदाचित थोरो झगरा भयो भन्या कचहरीमा ल्याई झगरा न सुंनु भंन्या थिति वाधि वक्सनु भयो . . .

आठौं थिति ॥  ॥ कुलाको पनि झगरा न सुंनु भंन्या हुकुम भयो क्या निमित्त भन्या कुलामा पनि बहुधा बाधा कमारा चाकरै जाँन्छन् तसर्थ आफ्ना आफ्ना षेतको हिसावमा आयाको पानिको भाग पालीपालासित लाउनु आफ्ना पाला वाहिक र आफ्ना आफ्ना हिसाव वाहेक अर्काले पानि न लाउनु तस्मा पनि थोरो झगरा भयो भन्या कचहरीमा जोरी  झगरा न सुंनु भंन्या यस्तै स्थिति बाधि बक्सनु भयो ...

नवौं थिति ॥  ॥ अघि ब्राहम्णलाई विर्ता दिदामा पनि फलानु डाडो फलानो षोलो फलानु पहरो फलानु काँल्हो भित्रको जग्गा विर्ता दिञ्यु भन्याको मात्रै येति मुरी येति रोपनि येति षेत भंन्या ठेगाना केही न हुनाले ब्राहम्णको विर्ताको र रैकर जग्गाका साध किलाको वंदेज न भयाको नजर हुदा कस्तो हुकुम भयो भन्दा अव उप्रान्त ब्राहम्णलाई विर्ता संकल्प परि वक्सदा श्री ५ महाराजाको भुमि चौतरियाको झारी काजिको विंती ब्राहम्णको हात दान गर्नाले येति षेत येति रोपनी येति मुरी भनि संकल्प गर्नु संकल्प गराउन्याले पनि संकल्प वाक्ये यही येति षेत येति रोपनि येति मुरी भंन्या वाक्ये परि संकल्प गराउनु विर्ता लिनु अरूलाई दिलाउनु पनि श्री ५ माहाराजका हुकुमले थर घर पाँचहरू गै साधलाई ४ किल्ला गाडी येति षेत येति रोपनि भनी

साधलाई श्री ५ महाराजका बाहुलीबाट संकल्प भयामा घटि बढि कति नपारि जति संकल्प भयाको छ तति साधलाई आउनु भन्या थिति बाधि बक्सनु भयो ...

दशौं थिति ॥ ॥ श्री देवताको गुठ धर्मसालाको गुठ, ब्राह्मणहरूलाइ विर्ता संकल्प गरि बक्सदा चौतरियाको झारी भन्याको क्या निमित्त हो भन्या चौतरिया भन्याका आफ्ना भाइ भाइ भन्याका सुषे अंग हुन् अंग पुर्न गरी दान ग–या आफूलाई यथोक्त फल हुँछ भनी चौतारियाको झारी भन्याको कारण येति हो काजिको विंति भन्याको क्या अर्थ भन्या पनपक्षे न गरी योग्यायोग्य विचार गरि काजिले विंति गर्नु काजिले विंति भन्याको येति हो. पाँचको साध भन्याको क्या अर्थ हो भन्या छ थर प्रमृति अरू पाँच साध भाइ वसि येति षेत येति रोपनि येति मुरि षेतको घडयारी येति पाषो भनि निकास पैसार संधि सर्पनको विचार राषि चार किल्ला गाडी साधलाइ दिनु पाँचको साध भन्याको यो हो भन्या थिति वाधि बक्सनु भयो ...

येघारौं थिति ॥ ॥ पाँडे पंथ अज्र्याल षनाल राना बोहरा तिमीहरू छ थर भयौ तिमीहरूलाई छ थर भन्याको वाध्याको क्या अर्थले हो भन्या चौतारिया काजि सर्दार इ प्रभृति अरू जो कोही अन्याय अनरितिमा लागि गादिको विगार्नामा र निसाफ विगार्नामा पस्नन् तिनको कति मोहवद मोलाहिजा न राषी जो भयाको विस्तार विंती गर्न आउनु भनि मर्जी भै छ थर भन्या व्यवस्ता वाधि बक्सनु भयो तिमीहरूका सन्तान, दरसन्तानलाइ हाम्रा संतान दरसंतानले गादिको सोझो गंरज्यालसम्म था.. वसौला भनि हुकुम भै थिति वाधि बक्सनु भयो ...

वारहौं थिति ॥   ॥ गौचर राषनु भन्या हुकुम भयो गौ ब्राह्मणलाई षाना कन दुःख हुन्छ र राजालाइ प्रत्यवायलागछ भंना निमित्त गाउ गाउमा निकास पैसार को चल्दो मिल्दो पारि गौचर राषनु भंन्या थिति बाधि वक्सनु भयो ...

तेहौं थिति ॥   ॥ बाटाका रूख राषनु भंन्या हुकुम भयो क्या अर्थले भन्या दुषी गरिव काज काम गरी थाकि आउन्या बोझा बोकी हिडन्या अरू जो कोहि वाटामा हिडन्या मानिस पनि गर्मी हुन्छ भनी छाहारी वस्न खोजछन् भंना निमित्त वाटाका रूष पालनु वाटाका रूष जो काटँतछ ५ रूपैञा दंड गरि लिनु भंन्या मर्जि भै थिति वाधि बक्सनु भयो ...

चौधौं थिति ॥   ॥ पध्यारामा वन पालनु रूष न भया देषि जैले षोज्यो तैले पानि रहदैन सुकी जान्छ वन ढेरै फाडिया पैरो पनी जान्छ ढेरै पैरो गया उपधाहा चल्छ उपधाहले षेत पनि लैजान्छ वन न भया गृहस्तिको कौनै काम पनि चल्दैन तसर्थ पध्याराको वन जो काटला तेसलाई पनि ५ रूपैञा दंड गरि लिनु भंन्या थिति वाधि बक्सनु भयो ...

पंध्रौं थिति ॥   ॥ चौतरिया भाई गोतिया इनहरूले जिय संवंधि ठूलो विराउ गऱ्या मुडि विदेस गराउनु संन्यासी वैरागि भाट इनले पनि ठूलो विराउ गऱ्या भन्या मुडि विदेस निकाला गराउनु भाइ चौतरिया गोतियालाइ विदेस गराउनु भन्याको क्या अर्थ भन्या जिउ मारिन्या पिराउ गऱ्यो भन्या जिउ लिन्याको जिउ लिनु भंन्या सास्त्रमा पनि कह्याको छ जिउमाऱ्या भन्दा गोत्रहत्या लागन्या नमाऱ्या देषी भन्या राजालाइ प्रत्यवास

लागन्या तसर्थ देसनिकाला गर्नु पनि मार्‍यै तुल्य छ भनि मुडी विदेस गराउनु भन्याको हो वैरागी संन्यासी भेष लियाका हुनाले अवध्य छन् भाट पनि अवध्य छन् भनि देस निकाला गर्नु भन्याको हो तसर्थ यसै गर्नु थिति वाधि बक्सनु भयो ...

सोहौं थिति ॥ ॥ षस मगर नेवार प्रभृति जात मध्येमा जियेसंबंधि विराउ गर्‍या भन्या जसले बिरायाको छ उसैको मात्र जिये मार्नु जस्को पाप उसको गर्धन भंन्या थिति वाधि बक्सनु भयो ...

सत्रौं थिति ॥ ॥ सुवर्ण का गहना श्री पाटवंदि महारानिले मात्र पाउमा पैह्रनु क्या अर्थले भन्या सुवर्ण भंन्याको नारायणको अंश राजा भन्याका पनि नारायणका अंश हुन पाटवंदी महारानि भन्याका लक्ष्मीका अंश हुनाले पाटवदि महारानिले सुवर्णका गहना पाउमा पैह्रनु भैयाद चौतरियाहरूका चौतार्निहरूले ता श्री ५ महाराजा श्रीमहारानीबाट बक्स्या मात्रै पाउमा न लाउनु वक्सी त पाउबाहेक मात्रमा लाउनु भाई चौतरियाका रौतेला रौतेली लाइ बालषकालमा मात्र पाउमा लाउनु ब्राह्मन षस मगर प्रभृति अरू जातिले त श्रीमहाराजाबाट वक्स्या मात्र हातमा लाउनु भनि थिति वाधि बक्सनु भयो...

अठारौं थिति ॥ ॥ (मुलैमा १८ थिति छुटन गयेको छ)

उन्नाईसौं थिति ॥ ॥ चार पुरोहित तुल्याइ बक्सनु भयो अजर्याललाइ आजर्यालि होतु अचार्ज वगाल्या लाइ होतु विहार्‍या लाइ आजर्यालि आचार्ये षनाल लाइ ब्रह्मन भट्टराइ लाइ गणेश ति चार पुरोहितका व्यवस्थाको थिति बाधि बक्सनु भयो ...

बिसौं थिति ॥   ॥ गोर्षामा प्रवेस हुदा पैले तल्ला कोटमा गादी पुऱ्याका हुनाले पांडे ब्राह्मन लाई पुरोहित्याजि बक्सनु भयो अर्येत पर्येत (अध पर्यन्त) पनि पांडे ब्राह्मनहरू तल्ला कोटमा पुरोहित छदै छन् ...

यकाइसौं थिति ॥   ॥ तल्ला कोटमा श्रीदेवता स्थापनागरि वलिदान गरि माथि दर्वारमा वलिदान गर्नु तल्ला कोटमा देवता स्थापना गरी वलिदान गरिकन माथि दर्वारमा वलिदानादि विधि गर्नु भंन्या थिति वाधि वक्सनु भयो...

बाइसौं थिति ॥   ॥ ग्राँजा थापा लाइ ददांगि मान बक्सनु भयो तुरुक क्षाकि आले ग्रांजा थापा ग्यामि राना इ तीन थरले आलो पालो गरी राषनु भनि कपर्दारि मान बक्सनु भयो पाडे पंथ अजर्याल इ तिन् थरलाइ आलो पालो गरिराषनु भनि षजानाको काम वक्सनु भयो धर्माधिकार सर्दारि भान्स्या येति मानका पनि अजलै लाइ वक्सनु भयो भंन्या थिति वाधि वक्सनु भयो ...

तेइसौं थिति ॥   ॥ विहोंटाको त्रिसाला कमाइ बाली आफैंले षानु चौथो साल देषी धनि वोटि तल्सींलाई दिनु वनि वोटी कमाउन्याले षानु भंन्या थिति वाधि वक्सनु भयो ...

चौविसौं थिति ॥   ॥ बाह्र थर अठार थर भन्या चौविसौ थिति वाधि वक्सनु भयो ...

पचिसौं थिति ॥   ॥  पाटनका राजा सिद्धिनरसिंहमल्ल सित हाम्रा संतान न भया तम्रा संतानले तम्रा संतान न भया हाम्रा सन्तानले राज्ये गर्नु भन्या हुकुम भै यस्तो

वंदोवस्त गरी वक्सी पाटन वाट चौविस कोठि झिकाइ, इन लाइ सात षत माफ गरी वक्सनु भयो भंन्या थिति वाधि वक्सनु भयो ...

छविसौं थिति ॥ ॥ श्री ५ महाराजा रामसाहवाट मैले वाध्याका थितिमा छोटा वडा प्रजा प्राणि चार वर्ण छतिस जात जो लंघन गर्ला तसलाइ म मेरा संतानमा जो राजा होला उसले ढुंगा छुवाइ षतअनुसारको राजाले डंड गर्नु भन्या थिति बाधि बक्सनु भयो ... यो ढुंगा छुवाउनु भन्याको कस्तो हो भन्या श्रीलक्ष्मीनारायण देवता को पाउमा प्रतिनिधि ढुगो हो, सो जानि पान फुल द्रव्य तसै सिलामा चढाई अन्याय गऱ्याको पाप छुटन्या उपाये येही हो भनी यस्तो थिति वाधि वक्सनु भयो ...